# मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमका केही चमत्कारहरू

[ नेपाली - Nepali - نيبالي ]

लेखकः अतीकुर्रहमान मो.इदरीस खान मक्की

संशोधकः मुहम्मद इदरीस सलफी

2014 - 1436

بسم الله الرحمن الرحيم

सर्वाधिकार लेखकमा सुरक्षित छ ।

**पुस्तक पाइने ठेगाना -:**

**□इस्लामिक गाइडेन्स सेन्टर कपिलवस्तु नगरपालिका**
**व.नं. ९ महुवा तौलिहवा कपिलवस्तु (नेपाल)**
**सम्पर्क नं. ००९७७-९८४७०३०७८०**
**९८१४४९९१४०**
**००९६६५०१३७२२५४**

**□इस्लामिक गाइडेन्स सेन्टर रबवा अल् रियाज सउदी अरबीया**

# प्रस्तावना

अलहम्दु लिल्लाहि नहमदुहु व नस्तईनुहु व नस्तगफिरहु व नऊजु बिल्लाहि मिन शुरूरि अनफुसिना व मिन सईयाति अअ्मालिना, मैँयहदिहिल्लाहु फलामिजिल्ला लहु व मैँयुजलिल्हु फला हादियालहु व अश्हदु अल्लाइलाहा इल्लल्लाहु व अश्हदु अन्ना मुहम्मदन् अब्दुहु व रसूलुहु । (अम्मा बअ्द)

समस्त प्रकारका प्रशंसाहरू अल्लाहकै लागि छन् जसले सर्म्पूण ब्रह्माण्डलाई उत्पन्न गऱ्यो, र अल्लाहको शान्ति अवतरित होस् अन्तिम संदेष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम र उहाँको घरपरिवार र साथीहरू माथि र उनी सबैहरू माथि जुन यस इस्लामको प्रचार प्रसार गरे र मुहम्मदको पद्धतिलाई उत्तम मानी उसै माथि हिंडी आफ्नो जीवन व्यतीत गरे ।

प्रस्तुत पुस्तिकामा मैले केही ती चमत्कारहरूको वर्णन गरेको छु जुन रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफूलाई सत्य सन्देष्टा प्रमाणित गर्नुको लागि प्रस्तुत गरेका थिए, जस्तोकि विगतका समस्त सन्देष्टाहरूले प्रस्तुत गर्दै आएका थिए । र यी चमत्कारहरूलाई हदीसका ग्रन्थहरू र इतिहास एवं रसूल सल्लल्लाहो अलैहे वसल्लमको जीवनीमाथि लेखिएका लेखहरूबाट

जम्मा गरेको छु, यस उद्देश्यको साथ कि यो पुस्तक इस्लामको सत्यतालाई प्रमाणीकरण गर्नेछ र दिग्भ्रमित मान्छेहरूलाई सत्यपथमा लगाई स्वर्गमा प्रवेश गराउने कारण बन्छ ।

मलाई आशा छ कि यो सानो पुस्तिका तपाईहरूको लागि लाभप्रद सिद्ध हुनेछ । र अल्लाह यसबाट तपाईहरूलाई फाइदा पुऱ्याई मलाई आफ्नो दयाको पात्र बनाउन् । अल्लाह सित विन्ती छ कि मेरो यो सानो प्रयासलाई कबूल गरी मलाई र मेरो घरपरिवारका समस्त सदस्यहरूलाई स्वर्ग प्रदान गरुन् (आमीन)


**लेखक**

**अतीकुर्रहमान मोहम्मद इदरीस खान मक्की**

**कपिलवस्तु नगरपालिका वार्ड न.९ महुवा**

**तौलिहवा कपिलवस्तु नेपाल**

**मो.नं. ००९७७–९८४७०३०७८०**

**Mob.00977-9814499140**

**00966501372254**

अल्लाहले यस ब्रह्माण्डलाई उत्पन्न गरे पश्चात यसमा बसोबास गर्ने जीवधारी एवं प्राणीहरूलाई पनि सृष्टि गऱ्यो, र विशेषगरी मानवजातिलाई सर्वश्रेष्ठ सृष्टि घोषित गरी त्यसलाई एकेश्वरवादमा सुदृढरही कर्म गर्ने आदेश गऱ्यो । तर समयको साथ साथै मान्छेहरूको अवस्था एवं आस्था पनि परिवर्तित हुँदै गयो, र एकेश्वरवादीहरू एकेश्वरवादलाई बिर्सेर बहुदेववादको जालमा पर्दै गए । अनि अल्लाहले उनीहरूको मार्गदर्शनको लागि सन्देष्टाहरू पठायो, र सबै सन्देष्टाहरूको सत्ययतालाई प्रमाणीकरण गर्नुको लागि उनीलाई केही विशेष चमत्कार पनि प्रदान गऱ्यो ।

त हजरत मूसा अलैहिस्सलामलाई विशेषरूपले लट्ठीको चमत्कार प्रदान गरियो जुन लट्ठी भूईंमा खसाल्दा सर्प भइहाल्थ्यो ।

यस्तै हजरत ईसा अलैहिस्सलामलाई मुर्दालाई जीवित गर्ने चमत्कार प्रदान गरियो, र निर्जीवमा ज्यान हाल्ने चमत्कार पनि प्रदान गरियो ।

त यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई पनि विभिन्न प्रकारका चमत्कारहरू प्रदान गरियो जस मध्ये सबैभन्दा उत्कृष्ट चमत्कार पवित्र कुरआन हो । र एउटा उर्दुभाषी कविको भनाई छ कि जति पनि चमत्कारहरू विगतका रसूलहरूलाई प्रदान गरिएको थियो ती सबै चमत्कारहरू मात्र एउटै सन्देष्टालाई प्रदान गरियो र त्यो सन्देष्टा हुन् समस्त सन्देष्टाहरूका समापक मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम । यसर्थ उनैलाई प्रदान गरिएका केही चमत्कारहरूको वर्णन म यस किताबमा गर्ने उद्देश्यले कलम उठाएको छु यस आशाको साथ कि तपाईहरूलाई यो किताब लाभ पुऱ्याई स्वर्गको बाटोमा लगाउने छ, र इस्लामको सत्यता तपाईहरूको हृदयमा जागृत गराउने छ । हे अल्लाह हामी सबैलाई सदउपदेश ग्रहण गर्ने सुअवसर प्रदान गर । र इस्लामलाई पूणरूपले अङ्गीकार गरेर स्वर्गमा प्रवेश पाउनेहरू मध्येको भाग्यवानहरू बनाइदेऊ ।

## प्रमुख चमत्कारहरूको संक्षिप्त वर्णन

१- उहाँ सल्लल्लाहो अलैहे वसल्लमको सर्वोत्कृष्ट र सर्वश्रेष्ठ चमत्कार हो पवित्र कुरआन । यो चमत्कार रसूल सल्लल्लाहो अलैहे वसल्लमको सबैभन्दा ठूलो चमत्कार हो, जसद्वारा अल्लाहले समस्त ब्रह्माण्डमा भएका सृष्टिहरूलाई हाँक दिए कि यदि कसैलाई मुहम्मदको दूतत्वमाथि सन्देह छ भने यसै कुरआन जस्तो वाँणी ल्याएर देखाओस् । अनि आज सम्म कुनै जीवधारी यस्तो उच्चकोटिको वाँणी ल्याउन सकेन, बरु कुरआनको एउटा श्लोक जस्तो श्लोक पनि ल्याउन सकेन । ( अश्शिफा लेखक काजी अयाज, अश्शमाइल लेखक इब्ने कसीर )

२- र यस्तै जब रसूल सल्लल्लाहो अलैहे वसल्लम बाल्यकालको अवस्थामा थिए, र कबिला बनिसअदका केही बालकहरूसंग खेलिराखेका थिए त्यसै समय हजरत जिब्रील अलैहिस्सलाम प्रकट भए, र उहाँको सीना (छाती ) लाई च्यातेर त्यसलाई जमजमको पानीले स्वच्छ पारे । त यो घटना पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कारहरू मध्ये एक हो ।

३- र यस्तै जब उहाँ सल्लल्लाहो अलैहे वसल्लम इस्रा र मेअ्राजबाट फर्कोर आए त काफिरहरूले उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई झुटो ठानेर

उपहास गरे र उहाँसित बैतुल् मुकद्दसको बारेमा प्रश्न गर्न थाले, अनि उहाँ मक्कामा बसेर फिलस्तीनमा स्थित बैतुल् मुकद्दसको बारेमा सबैलाई जानकारी गराए, र उनीहरूका समस्त प्रश्नहरूको ठीक ठीक उत्तर दिए । त यो पनि उहाँको चमत्कार मध्ये एक हो कि उनी कहिले काहिँ अल्लाहको आदेशले अदृश्यका कुराहरूको खबर पनि दिन्थे । ( बुखारी )

४- यस्तै जब काफिरहरूले उहाँ सल्लल्लाहो अलैहे वसल्लमसित कुनै प्रमाण वा चमत्कार ल्याउने माँग गरे र भने: तपाई पनि उस्तै कुनै चमत्कार प्रस्तुत गर्नुस् जसरी कि विगतका सन्देष्टाहरूले प्रस्तुत गर्दै आएका छन् । त उहाँ सल्लल्लाहो अलैहे वसल्लमले अल्लाहसित याचना गरे, त अल्लाहले उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई आदेश गऱ्यो कि चन्द्रतर्फ आफ्नो औंलाले संकेत गर्नुस् अनि त्यो दुई टुक्रामा विभाजित भइजाने छ, अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमले आफ्नो औंलाले चन्द्रतर्फ संकेत गरे अनि अल्लाहको हुकुमले चन्द्र दुई टुक्रामा विभाजित भइहाल्यो । र सबै काफिरहरूले यस अनोठो दृश्यलाई आफ्नो आँखाले साक्षात दर्शन गरे, तै पनि अनास्थावानहरू आस्थावान भएनन् । र यस

घटनाको पुष्टि आजको विज्ञान पनि गर्छ। त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमका चमत्कारहरू मध्ये एक हो। ( बुखारी, अस्सीरह लेखक इमाम जहबी )

५- र यस्तै जब रसूल सल्लल्लाहो अलैहे वसल्लम प्रवास गर्ने समय सौर नामक गुफामा श्रण लिएका थिए, र कुरैश गोत्रका काफिरहरू उहाँ सल्लल्लाहो अलैहे वसल्लमको खोजी गर्दै त्यस गुफाको मुहान सम्म पुगिहालेका थिए तै पनि उनीहरूले उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई हेर्न सकेनन् बरु उनीहरूको दृष्टिमाथि आवरण परिहाल्यो र उनीहरू त्यहाँबाट निराश भएर फिर्ता आए। त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कारहरू मध्ये एक हो। ( अत्तबकात लेखक इब्ने सअद )

६- र यस्तै हुनैनको युद्धमा रसूल सल्लल्लाहो अलैहे वसल्लमले एक मुठ्की माटो काफिरहरू माथि फाल्नु भयो अनि सबै काफिरहरू दृष्टिहीन भइहाले, र मुसलमानहरूको विजय भयो यस पश्चात कि मुसलमानहरू पराज्य नजीक पुगिसकेका थिए। त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये एक हो। ( मुस्लिम )

७- र यस्तै जब उहाँ सल्लल्लाहो अलैहे वसल्लम हजरत अबू बक्र रजिअल्लाहो अन्होको साथ प्रवास गरेर जाँदैथे, त बाटोमा थकाई मार्नुको निम्ति एउटा ठाउँमा विराम लिए, त भोजनको लागि केही नभएको कारण त्यो ठाउँमा बसोबास गरिरहेकी उम्मे मअ्बदसित हजरत अबू बक्रले केही खाने कुराको अनुरोध गरे, त उम्मे मअ्बदले भनिन्: यहाँ त अन्नकाल परेको छ, र घरमा यो एउटा बाख्रा छे जुन अति दुर्वल र वृद्ध छे। त रसूल सल्लल्लाहो अलैहे वसल्लमले त्यसै वृद्ध बाख्रालाई दुहने आज्ञा चाहनु भयो, अनि आज्ञा मिले पश्चात अल्लाहको नाम लिई त्यसको स्तनलाई स्पर्श गरे बित्तिकै बाख्राको स्तन दूधबाट परिपूर्ण भयो, र रसूल सल्लल्लाहो अलैहे वसल्लमले त्यसलाई दुहेर स्वयम् खाए र अबू बक्रलाई खुवाए र भाँडामा राखेर उम्मे मअ्बदका परिवारको लागि पनि राखे । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये एक हो । ( अर्रहीकुल् मख्तूम लेखक शैख सफीउर्रहमान मुबारकपुरी )

८- र यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लमले हजरत अली रजिअल्लाहो अन्होको लागि याचना गर्नु भयो कि अल्लाह आफ्नो दयाले उनको विरामी र रोगलाई सँचो पारिदिउन्, अनि हजरत

अली यस दुआ पश्चात कदापि विरामी भएनन्। यस्तै एउटा सहाबीलाई पीडा भएको ठाउँमा स्पर्श गर्नु भयो अनि त्यो पीडा तुरुन्तै हरण भयो। त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये एक थियो। ( बुखारी )

९- र यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लमले अब्दुल्लाह बिन अब्बासको लागि यो प्रार्थना गर्नु भयो कि हे अल्लाह यिनीलाई इस्लाम धर्मको विद्वान बनाइदेऊ, अनि अब्दुल्लाह बिन अब्बास यति ठूलो विद् भए कि उनीलाई ज्ञानको सागर भन्न थालियो, र आज पनि उनीलाई ज्ञानको सागरको नामले स्मरण गरिन्छ। त यो पनि उहाँको चमत्कारहरू मध्ये एक हो। ( बुखारी )

१०- यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लमले हजरत अनस रजिअल्लाहो अन्होको लागि दुआ गर्नु भयो कि अल्लाह उहाँलाई ठूलो आयु प्रदान गरुन्, र उहाँको सन्तानहरूमा वृद्धि गरुन्। अनि अनस रजिअल्लाहो अन्होका कुल १२० सन्तानहरू भए, र उहाँ १०० वर्ष भन्दा बढी जीवित रहे। त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमका चमत्कारहरू मध्ये एक हो। ( मुस्लिम, अश्शमाइल लेखक इब्ने कसीर )

११- यस्तै जब एक समय आयो कि अरबमा अन्नकाल पऱ्यो र खानुको केही शेष बाँकी

रहेन त मान्छेहरू उहाँ सल्लल्लाहो अलैहे वसल्लम समक्ष आए यस अवस्थामा कि उहाँ सल्लल्लाहो अलैहे वसल्लम खुत्बा दिई रहनु भएको थियो । अनि मान्छेहरूले भने: हे अल्लाहका रसूल सल्लल्लाहो अलैहे वसल्लम हाम्रो लागि वर्षाको याचना गरिदिनुस् । अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमले अल्लाहसित दुआ गर्नु भयो त आकाशमा बादलको एक टुक्रा पनि थिएन, तर एकासी बादलका टुक्राहरू आउनथाले र यस्तो भीषण वर्षा भयो कि सबै आएर भन्न थाले: हे अल्लाहका रसूल वर्षा रोक्नुको लागि दुआ गरिबक्सनु होस् किनकि वर्षाबाट घरहर भत्कन् थाले, अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमले फेरि एक चोटि दुआ गर्नु भयो अनि वर्षा रुकिहाल्यो । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमका चमत्कारहरू मध्ये एक चमत्कार हो । (बुखारी)

१२- र यस्तै जब उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई उत्बा बिन अबि लहबले धेरै कष्ट पुऱ्यायो, र उहाँ सल्लल्लाहो अलैहे वसल्लमको साथीहरूलाई अधिकतम् यातना दिनथाल्यो, त रसूल सल्लल्लाहो अलैहे वसल्लमले उसलाई श्राप दिएर अल्लाहसित दुआ गरे कि हे अल्लाह यसमाथि आफ्नो सिंहहरू मध्ये कुनै सिंहलाई

लगाई देऊ ( हदीसमा कुकुरको शब्द वर्णन छ जसको अर्थ यस हदीसमा सिंहे हो ) अनि रोमको जरकाअ् नामक स्थानमा उत्बालाई सिंहले आइसमात्यो । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमका चमत्कारहरू मध्येको हो । ( अद्दलाइल लेखक अबू नुअैम, अश्शिफा लेखक काजी अयाज )

१३- र यस्तै एक दिन रसूल सल्लल्लाहो अलैहे वसल्लम एउटा गाउँलेलाई इस्लामतर्फ आव्हान गर्नु भयो त उसले भन्यो: के तिमीसित कुनै प्रमाण छ कि म तिम्रो कुरालाई सत्यमानूँ, त

रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: यो रुख मेरो सत्यताको गवाही दिनेछ, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले त्यस रुखलाई बोलाउनु भयो, अनि त्यो रुख हिंडेर उहाँ समक्ष आयो र तीनचोटि उहाँको सत्यताको गवाही दिएर आफ्नो ठाउँमा फर्क्यो । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये एक हो । ( अश्शमाइल लेखक इब्ने कसीर, सुनन् लेखक दारमी )

१४- यस्तै बनू आमिर गोत्रको एउटा मान्छेले रसूल सल्लल्लाहो अलैहे वसल्लमसित भन्यो: कि तिमी केही कुराहरू भन्छौ त के म तिम्रो उपचार गरुँ ? र यो मान्छे वास्तवमा वैध थियो,

त रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: के म तिमीलाई प्रमाणको दर्शन गराऊँ, अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमले त्यस खजूरको रुखलाई जुन त्यस भूभागमा स्थित थियो आफू समक्ष बोलाउनु भयो, अनि त्यो रुख यस अवस्थामा उहाँ समक्ष आउन लाग्यो कि आउँदाखेरि उहाँलाई ढोग गर्दैथियो । अनि जब त्यो रुख उहाँ सल्लल्लाहो अलैहे वसल्लम समक्ष आएर उभ्यो त उहाँ सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: अब आफ्नो स्थानतर्फ प्रस्थान गर । अनि त्यो रुख आफ्नो स्थानतर्फ फर्केर स्थिर भयो । यो हेरेर त्यो मान्छेले भन्यो: अल्लाहको शपथ म आजदेखि तिम्रो कुनै कुरालाई असत्य ठान्दैन । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये एक थियो । ( तारीखुल् कबीर लेखक इमाम बुखारी, मुस्नद अहमद )

१५- यस्तै एक दिन रसूल सल्लल्लाहो अलैहे वसल्लम हजरत अनस रजिअल्लाहो अन्होलाई आदेश दिनु भयो कि उहाँ खजूरको रुखहरू सम्म गएर उनीलाई यो आदेश गरुन् कि अल्लाहको रसूल उनीहरूलाई एकजुट हुने आदेश गरेका छन्, त सहाबी भन्छन् कि ती खजूरका रुखहरू समक्ष गएर मैले भनें: कि अल्लाहको रसूल

सल्लल्लाहो अलैहे वसल्लम तिमीहरूलाई एकजुट हुने आदेश गरेका छन् कि तमीहरू एकजूट भएर पर्खाल झैं भइहाल । अनि हजरत अनसको भनाई छ कि : म हेरिराखेका थिएँ कि कसरी उनीहरू यताउताबाट आएर पर्खाल जस्तै भइराखेका थिए, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफ्नो अवश्यकता पूर्ण गरे पश्चात ( दिसा गरे पश्चात ) उनीलाई आदेश गरे कि अआफ्ना स्थान ग्रहण गरिहालुन्, अनि सबै अआफ्ना स्थानतर्फ फर्के । त यो पनि उहाँका चमत्कारहरू मध्ये एउटा चमत्कार हो । ( अश्शमाइल लेखक इब्ने कसीर, अश्शिफा लेखक काजी अयाज )

१६- यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लम जस मिम्बरमाथि उभेर खुत्बा दिन्थे जब त्यसलाई छाडेर आर्को मिम्बरमा उभेर खुत्बा दिनथाले त त्यो मिम्बर रुन थाल्यो अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमले त्यसलाई चुप गराउनु भयो । यो पनि उहाँको चमत्कार मध्ये एक थियो । ( बुखारी, मुस्लिम, मुस्नद अहमद, इब्ने माजा, तिर्मिजी )

१७- यस्तै उहाँ सल्लल्लाहो अलैहे वसल्लमको हातमा सानो ढुङ्गाहरूको ठूलो स्वरमा अल्लाहको गुणगान गर्नु पनि उहाँको चमत्कार मध्ये एक हो

। ( अद्दलाइल लेखक इमाम बैहकी, अश्शमाइल लेखक इब्ने कसीर )

१८- यस्तै जब बद्र नामक युद्ध आइपुग्यो, र मुसलमान र काफिरहरूका सेनाहरू रणभूमिमा आमुन्ने सामुन्ने पंक्तिवद्ध भए त रसूल सल्लल्लाहो अलैहे वसल्लमले काफिरहरूको नायकेहरूको बध हुने स्थानको घोषणा युद्ध हुनुभन्दा पहिला नै गरिबक्सनु भयो । अनि जब युद्ध समाप्त भयो त काफिरहरूका नायकेहरू त्यसै स्थानहरूमा फेला पारिए जुन जुन स्थानहरूको घोषणा रसूल सल्लल्लाहो अलैहे वसल्लमले युद्ध अघि नै गरिसकेका थिए । त यो पनि रसूल सल्लल्लाहो अलैहे वसल्लमका चमत्कारहरू मध्ये एक थियो । ( बुखारी )

१९- यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लमले यो भविष्यवाँणी गर्नु भयो कि निकट भविष्यमा मेरो अनुयायीहरूको एक समूह समुन्द्रमा युद्ध गर्नेछ, र त्यस समूहमा एउटी आइमाइ उम्मे हराम बिन्ते मलहान पनि हुने छिन् । अनि जब यो युद्ध भयो त त्यस समूहमा त्यो आइमाइ पनि उपस्थित थिइन् । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये एक हो । ( बुखारी )

२०- यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफ्नो प्यारो निवासो (छोरीको पुत्र) हजरत हसन रजिअल्लाहो अन्होलाई भन्नु भयो: "मेरो यो छोरो ( अर्थात छोरीको पुत्र ) नायक हुनेछ, र आशा छ कि अल्लाह यसद्वारा इस्लामका दुई विशाल समूह बीच संधि गराओस्" । अनि केही समय पछि अल्लाहले उहाँको निवासो हसनको माध्यमले इस्लामका दुई विशाल समूह बीच सुलह संधि गरायो । त यो भविष्यवाँणी पनि उहाँको चमत्कार मध्ये एक थियो । ( बुखारी )

२१- यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: कि मेरो लागि पूर्व र पश्चिमको धरतीलाई बेरियो, र जति धरतीलाई मेरो लागि बेरियो त्यति धरतीमाथि मेरा अनुयायीहरू पुग्ने छन् (अर्थात उनीहरूको अधिपत्य कायम हुनेछ) अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भने बमोजिम नै घटित भयो अर्थात मुसलमानहरू यूरोप र अफ्रीकामाथि विजयी भए । त यो पनि उहाँको चमत्कार नै थियो । ( अश्शिफा लेखक काजी अयाज )

२२- यस्तै जब पवित्र कुरआनको सूरतुल् मसद अर्थात तब्बत् यदा अबिलहब.. अवतरित भयो त अबू लहबकी श्रीमती रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई खोज्दै हजरत अबू बक्र जजिक

पुगी, त हजरत अबू बक्रले रसूल सल्लल्लाहो अलैहे वसल्लमसित भने: हे अलाहका रसूल अबू लहबकी श्रीमती नराम्रो आचरणकी युवती छे, मलाई भय छ कि हजुरलाई कुनै कष्ट नपुऱ्याओस्, त मेरो हजुरसित अनुरोध छ कि यहाँबाट गइहाल्नुस् । त रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: त्यो दुष्ट युवती मलाई हेर्न सक्दैन । अनि अबू लहबकी श्रीमती अबू बक्र समम पुगे पश्चात भनीस्: हे अबू बक्र तिम्रो साथी कता छ ? त्यसले मलाई कष्ट पुगाएछ, र मेरो पूर्वजहरूको कविताद्वारा निन्दा गरेको छ । त हजरत अबू बक्रले भने: रसूल सल्लल्लाहो अलैहे वसल्लम त कविता भन्दैनन् । त त्यसले भन्यो मैले तिम्रो कुरामा विश्वास गरें किनकि तिमी मेरो समीप सत्यवान हौ । अनि मैले रसूल सल्लल्लाहो अलैहे वसल्लमसित सोधें: हे अल्लाहका रसूल सल्लल्लाहो अलैहे वसल्लम त्यसले हजुरलाई कष्ट किन पुऱ्याएन ? त रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: त्यसले मलाई हेर्नै सकेन किनकि एउटा फरिशताले आफ्नो पंखद्वारा मलाई त्यस दुष्ट युवतीबाट लुकाएका थिए । त यो पनि उहाँको चमत्कार मध्ये एक हो । ( अद्दलाइल लेखक अबू नुअैम )

२३- यस्तै एउटा मान्छे इस्लामबाट मुर्तद भइहाल्यो अर्थात इस्लाम कबूल गरे पश्चात तयसबाट पन्छ्यो, र काफिरहरूसित गएर मिलिहालयो, अनि जब त्यसको मृत्यु भयो र यो समाचार रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई पुग्यो त उहाँ सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: "त्यस मुर्तद व्यक्तिलाई यो धरती कबूल गर्दैन"। त अबू तलहा सहाबी भन्नु हुन्छ कि म त्यस स्थानतर्फ गएँ जहाँ त्यसको मृत्यु भएको थियो, त के हर्छु कि त्यो बिना कफन दफन फालिएको छ। अनि मैले मान्छेहरूसित सोधें कि यस मान्छेको यो अवस्था किन ? त उनीहरूले उत्तर दिए: कि हामीले यसलाई दफनाउन प्रयास गरें अर्थात अन्ति संस्कार गर्ने प्रयास गरें तर धरतीले यसलाई स्वीकारेन । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमका चमत्कारहरू मध्ये एउटा चमत्कार नै थियो। ( बुखारी )
२४- यस्तै उहाँको चमत्कार मध्ये यो पनि हो कि एक दिन एउटा मान्छे आफ्नो देब्रे हातद्वारा भोजन ग्रहण गरिरहेको थियो, त रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: आफ्नो दायाँ हातले भोजन गर । त त्यसले भन्यो: म दाहिना हातले खान सक्दैन । अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: तिमी

सदैंवको लागि यसबाट भोजन गर्न नसक, अनि त्यो मान्छे त्यस दिनदेखि आफ्नो दायाँ हातबाट भोजन गर्न सकेन । त यो पनि उहाँको चमत्कार नै थियो । ( मुस्लिम )

२५- र उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये यो पनि हो कि उहाँको दूतत्वको गवाही ब्वाँसोले पनि दिएको थियो । र यस्तै उहाँको दूतत्वको गवाही गोहले पनि दिएको थियो । ( बुखारी, अद्दलाइल लेखक अबू नुऐम )

२६- यस्तै उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये यो पनि हो कि जब खन्दक नामक युद्धमा सहभागी सहाबीहरू जिनको संख्या लगभग एक हजार थियो भोकले व्याकुल भएका थिए, त रसूल सल्लल्लाहो अलैहे वसल्लमले एक हजार मान्छेहरूलाई मात्र एक सेई जौबाट भोजन गराउनु भएको थियो, र तत्पश्चात भोजन एक सेईभन्दा बढि शेष बाँकी नै थियो । ( बुखारी )

२७- र यस्तै उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये यो पनि हो कि हजरत अबू हुरैरह रजिअल्लाहो अन्हो केही खजूर लिएर हजुर समक्ष उभेर भन्नु भयो: हे अल्लाहका रसूल यस खजूरमा अल्लाहसित बरकत ( कल्याण) को दुआ गरिदिनु होस्, अनि रसूल सल्लल्लाहो अलैहे

वसल्लमले त्यस खजूरमा बरकतको दुआ गरिदिनु भयो, र भन्नु भयोः यदि तिमीलाई यसको आवश्यकता होस् त आफ्नो हातलाई आफ्नो यस खल्तीमा हाली आफ्नो अवश्यकता अनुसार भिक्नु, तर सबैलाई एकैचोटि ननिकाल्नु । अबू हुरैरहको भनाई छ कि हामी त्यसबाट खाँदै गरें यहाँ सम्म कि हजरत उस्मान रजिअल्लाहो अन्होको साशनकालमा त्यो मसित हरायो । ( तिर्मिजी )

२८- यस्तै एकचोटि एउटा कटोरीमा दूध आयो अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले पहिला सबै सुफ्फावालाहरूलाई दूध खुवाउनु भयो, त उनीहरूले अआफ्ना क्षमता अनुसार पेट भरेर खाए अनि अबू हुरैरहलाई पेट भरेर खुवाउनु भयो, अनि स्वयम्ले पनि खानु भयो । अर्थात मात्र एक कटोरी दूधमा सबै पेट भरेर खाए, त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये एक थियो । ( अश्शिफा लेखक काजी अयाज )

२९- र यस्तै उहाँसल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये यो पनि हो कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले एक दिन अबू तलहा रजिअल्लाहो अन्होको घरमा ८० जनालाई जौका केही दानाहरूबाट भोजन गराए जुन दाना (गेणा)

हरूलाई हजरत अबू तलहा रजिअल्लाहो अन्होले आफ्नो काँखामुनि राखेका थिए, र समस्त ८० जनाले पेटभरी खाए पश्चात पनि त्यो गेणाहरू जस्ताका त्यस्तै शेष बाँकी रहेका थिए । ( बुखारी )

३०- यस्तै उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये यो पनि हो कि उहाँको साथी हजरत जाबिर बिन अब्दुल्लाह रजिअल्लाहो अन्हो वर्णन गर्छन् कि म एक दिन अस्रको नमाजमा उपस्थित थिएँ तर हामीसित वजूबाट बचेको पानी बाहेक अरु कुनै पानी थिएन, अनि हामीहरूले त्यो बचेको पानीलाई एउटा भाँडामा जम्मा गरी रसूल सल्लल्लाहो अलैहे वसल्लम समक्ष पुगें, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफ्नो हात त्यस भाँडामा हाल्नु भयो, र आफ्नो औंलाहरूलाई अलि फराकिलो गर्नु भयो, र भन्नु भयो: आऊ वजू गर अल्लाहद्वारा यस पानीमा बरकत गरिने छ । त जाबिर रजिअल्लाहो अन्होको भनाई छ कि मैले हेरें कि पानी उहाँ सल्लल्लाहो अलैहे वसल्लमका औंलाहरूबाट निस्की राखेको छ, अनि सबैले वजू पनि गरे र अआफ्ना तिर्खा पनि मेटाए, र त्यस पानीबाट वजू बनाउनेहरूको संख्या १४०० थियो । (बुखारी)

३१- र यस्तै हजरत जाबिर रजिअल्लाहो अन्होबाट नै वर्णन छ कि हुदैबियाको दिन सबैजना तिर्खाबाट व्याकुल भए, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लम समक्ष आए, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले अलिकति पानीमा आफ्नो हात हाल्नु भयो, अनि मैले हेरें कि पानी उहाँ सल्लल्लाहो अलैहे वसल्लमको औंलाबाट मूल झैं प्रवाहित हुन्थाल्यो, र १५०० को समूहले त्यस पानीबाट लाभान्वित भए । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कार मध्ये एक थियो । ( बुखारी )

३२- र यस्तै उहाँ सल्लल्लाहो अलैहे वसल्लम समक्ष एउटा सानो भाँढामा पानी ल्याइयो, अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको औंलाहरूबाट पानीको मूल निस्कन थाल्यो, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो: आऊ वजू गर, र वजू बनाउनेहरूको संख्या त्यस समय लगभग ३०० भन्दा अधिक थियो । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमका चमत्कारहरू मध्ये एक थियो । ( बुखारी )

३३- यस्तै तबूक युद्धको मौकामा समस्त सैनिकहरू तिर्खाएका थिए तर पानीको कतै नाम अथवा निशान पनि थिएन, अनि सबै मिलेर रसूल सल्लल्लाहो अलैहे वसल्लमसित गुनोसो गरे

। अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफ्ना वाणहरू मध्येबाट एउटा वाण निकाले अनि त्यसलाई पृथ्वीमा धंसाउन आदेश गरे, अनि त्यसैबाट पानीको मूल प्रवाहित भयो, र समस्त तिर्खाएका मान्छेहरूले अआफ्ना तिर्खा मेटाए। र त्यस समय सबैको संख्या ३० हजार थियो । त यो पनि उहाँको चमत्कार मध्ये एक थियो । ( मुस्लिम )

३४- यस्तै बद्रको युद्धमा उकाशा बिन मेहसन रजिअल्लाहो अन्होको तरवार भाँच्यो, अनि उकाशाले भने: हे अल्लाहका रसूल मेरो तरवार त भाँच्यो, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले उकाशालाई एउटा लाउरो दिएर भने यसलाई हल्लाऊ, जब उकाशाले त्यसलाई हल्लाए त त्यो लाउरो तरवार भयो अनि उकाशा अगाडि बढे र काफिरहरूसंग युद्ध गर्न थाले । र यो तरवार उकाशासंग सधैं रहन्थ्यो उहाँ कदापि यसलाई कतै छाड्दैन्थे । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कारहरू मध्ये एक चमत्कार थियो ।( सीरतु इब्ने हिशाम )

३५- यस्तै जब रसूल सल्लल्लाहो अलैहे वसल्लमले मक्कामाथि आक्रमण गर्ने योजना बनाए त हजरत हातिब बिन बल्ताले एउटा पत्र लेखि एउटी युवतीलाई दिई मक्कातर्फ पठाए,

तर यस रहस्यमय गतिविधिको जानकारी रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई
वह्यद्वारा गराइयो, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले हजरत अली र हजरत जुबैर रजिअल्लाहो अन्हुमालाई त्यस युवती पछाडि पठाउनु भयो र भन्नु भयो त्यस युवतीले त्यस पत्रलाई आफ्नो केशको जुडामा राखेछे । अनि दुवै सहाबीले त्यस युवतीलाई समाते पश्चात त्यो पत्र त्यसको केशको जुडाबाट बरामद गरे । त यो पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमका चमत्कारहरू मध्ये एक थियो । ( बुखारी )
३६- यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लमको सैनिकहरूमा एउटा यस्तो मान्छे थियो कि त्यो आफ्नो सामुन्ने आएको सबै शत्रुहरूलाई मुला झैं काटिदिन्थ्यो, र त्यसको युद्धशैली हेरेर सहाबाहरूले भन्न थाले: आज त फलानको दिन नै हो । तर रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो त्यो नर्कीय मध्येको हो । त सबैलाई अति अचम्म लाग्यो । त एउटा सहाबी त्यस वीरको पछि पछि लागे त के हेर्छन् कि त्यो घइते भए पश्चात आत्महत्या गऱ्यो अनि नर्कीय मध्येको भयो । त यो भविष्यवाँणी पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको चमत्कारहरू मध्ये एक थियो । ( बुखारी )

३७- र उहाँ सल्लल्लाहो अलैहे वसल्लमको प्रख्यात चमत्कारहरू मध्ये इस्रा र मेअ्राजको घटना पनि हो । कुरो यो थियो कि एक रात्री महिमावान अल्लाहले आफ्नो प्रिय रसूल मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई सातौं आकाशको यात्रा गराउनु भयो । पहिला उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई बैतुल् मुकद्दस बुराक नामक सवारीमा बसालेर पुऱ्याइयो, जहाँ उहाँ सल्लल्लाहो अलैहे वसल्लमले सबै सन्देष्टाहरूलाई दुई रक्अत नमाज पढाउनु भयो, अनि उहाँ समक्ष हजरत जिब्रील अलैहिस्सलामले मदिरा र दूध मध्ये कुनै एकलाई खाने आग्रह गरे त उहाँ सल्लल्लाहो अलैहे वसल्लमले दूधलाई चयन गरी त्यसैको सेवन गर्नु भयो, त हजरत जिब्रीलले भने: हजुरले फतिरत अर्थात प्रकृतिलाई मनपराउनु भएको छ। अनि हजरत जिब्रील उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई लिएर आकाशतर्फ प्रस्थान गरे। र जब पहिलो आकाश सम्म पुगे त आकाशलाई खोल्ने आदेश गरे त प्रश्न गरियो तपाईको साथमा को छ? त हजरत जिब्रीलले उत्तर दिए रसूलहरूको समापक मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम हुन्, अनि आकाशको द्वार खोलियो, त दुवैजना आकाशमाथि गए, त मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले

आदम अलैहिस्सलामलाई हेरे, अनि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले हजरत आदमलाई सलाम गरे, त हजरत आदमले उहाँ सल्लल्लाहो अलैहे वसल्लमको सलामको जवाफ दिए र उहाँको दूतत्वलाई स्वीकारे, अनि अल्लाहले उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई हजरत आदमका दाहिनातर्फ स्वर्गीयहरूलाई र देब्रेतर्फ नर्कीयहरूलाई देखायो । अनि हजरत जिब्रील उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई लिएर दोस्रो आकाशमाथि पुगे, जहाँ रसूल सल्लल्लाहो अलैहे वसल्लमको भेंट हजरत यहेया बिन जकरीया, र हजरत ईसा बिन मरियमसित भयो । अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले दुवै नबीहरूलाई सलाम गरे त दुवैजनाले उहाँ सल्लल्लाहो अलैहे वसल्लमको सलामको जवाफ दिए र उहाँ सल्लल्लाहो अलैहे वसल्लमको दूतत्वलाई स्वीकारे ।

अनि हजरत जिब्रील रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई साथ लिएर तेस्रो आकाशमाथि पुगे, अनि यस आकाशमा हजरत यूसुफ अलैहिस्सलामसित भेंटघाट भयो, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले उहाँलाई सलाम गर्नु भयो, र उहाँले रसूल सल्लल्लाहो अलैहे वसल्लमको सलामको जवाफ पनि दिए र उहाँ

सल्लल्लाहो अलैहे वसल्लमको दूतत्वको स्वीकृति पनि गरे । यस्तै चौथो आकाशमा हजरत इदरीससित र पाँचौ आकाशमा हजरत हारूनसित र छटौं आकाशमा हजरत मूसासित भेंट भयो, र सातौं आकाशमा रसूल सल्लल्लाहो अलैहे वसल्लम हजरत इब्राहीमसित भेटे । तत्पश्चात सदिरतुल् मुन्तहातर्फ प्रस्थान गरे र एक सीमामा पुगेर हजरत जिब्रीलले भने: यो सीमाभन्दा अगाडि म जानसक्दैन अब तपाई अगाडि एक्लै जानुस्, अनि रसूल सल्लल्लाहो अलैहे वसल्लम एकलै अगाडि जानु भयो, र आफ्नो पालनकर्तासित त्यहाँ कुराकानी गर्नु भयो तर यो कुराकानी आवरणको पछाडिबाट नै भएको हो । रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफ्नो पालनकर्तालाई हेरेनन् नत कुनै मनुष्य यस जीवनमा हेर्न नै सक्छ बरु मृत्यु पश्चात स्वर्गीयहरू अवश्य अल्लाहको दर्शन गर्ने छन् । अनि यसै मौकामा अल्लाहले उहाँमाथि र उहाँका अनुयायीहरूमाथि पाँच बखतको नमाज पनि अनिवार्य गरेको थियो । ( जादुल् मआद, सहीह बुखारी )

र यस जस्ता अरु चमत्कारहरू छन् जसलाई लेख्दा एउटा ठूलो पुस्तक तयार भइहालछ, मैले रसूल सल्लल्लाहो अलैहे वसल्लमको दूतत्वलाई

प्रमाणित गर्नु र इस्लाम धर्मको सत्यतालाई प्रमाणित गर्नुको लागि यति चमत्कारहरू तपाईहरूको समक्ष प्रस्तुत गरेको छु यस उद्देशयको साथ कि कदाचित कुनै भ्रमित व्यक्ति यसपुस्तकलाई अध्ययन गरे पश्चात सुमार्गलाई अङ्गीकार गरिहालोस् र इस्लामलाई आफ्नो जीवनशैली बनाई आफ्नो उद्धार गरोस्। अल्लाह हामी सबैलाई सुमार्गमा हिंडने र त्यसै बमोजिम कर्म गर्नै अवसर प्रदान गरुन्, र जुन मान्छेहरू पनि दिग्भ्रान्त छन् उनीलाई यस किताबको माध्यमबाट इस्लामको सत्यतालाई पत्तयाउने शक्ति प्रदान गरुन्, र समस्त सृष्टिको लागि यो लेख मार्गदर्शक बनाई सबैलाई स्वर्गमा जाने सौभाग्य प्रदान गरुन्, हे अल्लाह हाम्रो याचनालाई कबूल गर, र हामीलाई स्वर्गीहरू मध्येको बनाई देऊ तिम्रो महिमा अपरम्पार छ र तिमी सर्वशक्ति समपन्न छौ ।

अन्तमा अल्लाह सित प्रार्थना छ कि अल्लाह हामीलाई धर्म इस्लामलाई पूर्णरूपले स्वीकार गर्ने सौभाग्य प्रदान गरुन् । र त्यसका समस्त निर्देशनहरूलाई अपनाई त्यसबाट लाभन्वित हुने सुअवसर प्रदान गरुन् । र हाम्रा माल सम्पत्ति र संतानमा वृद्धि गरुन् । र हाम्रा निःसंतान दाजुभाइ

र दिदीबहिनीहरूलाई संतान प्रदान गरी उहाँहरूको मुटुलाई शीतल पारुन् । र जेजति हामीले अज्ञानताले पापहरू गरेका छौं त्यसलाई क्षमा गरी हाम्रा पापहरूलाई पुण्यमा परिणत गरुन्, र हामीलाई कुरआन र हदीसको अनुशरण गर्ने शक्ति प्रदान गरी स्वर्ग प्रदान गरुन् । ( आमीन )

# *समाप्त*


*लेखक*

**अतीकुर्रहमान मोहम्मद इदरीस खान मक्की**

**कपिलवस्तु नगर पालिका वॉड नं.९**

**महुवा तौलिहवा कपिलवस्तु**

**नेपाल**

Mob. No.00977-9847030780-9727649238

00966-0501372254

Email-atiqkhannp1982@yahoo.com